# निजी वन जङ्गल राष्ट्रियकरण ऐन, २०१३

लालमोहर र प्रकाशन मिति

२०१३।१०।१२

## २०१३ सालको ऐन नं. १८

## निजी वन जङ्गललाई राष्ट्रियकरण गर्ने ऐन

वन जङ्गल राष्ट्रिय धनको एक आवश्यक भाग भएको हुनाले राष्ट्रिय धन नाश हुनबाट रोक्न र देश तथा जनताको हितका लागि उत्तमरुपले वन जङ्गलको संरक्षण व्यवस्था तथा उपयोग गर्नको निमित्त निजी वन जङ्गललाई राष्ट्रियकरण गर्न आवश्यक भएकोले,

श्री ५ महाराजाधिराजबाट मन्त्रिमण्डलका सल्लाह अनुसार यो ऐन बनाई जारी गरिबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम “निजी वन जङ्गल राष्ट्रियकरण ऐन, २०१३” रहेकोछ ।

(२) यो ऐन नेपाल राज्यभर तुरुन्त लागू हुनेछ ।

२. **निजी वनको निर्धारण** : (१) यस ऐनको तात्पर्यको लागि निजी वन जङ्गल भन्नाले यो ऐन प्रारम्भ हुनु अगावै पूरा वा केही अंशमा राज्यका (रेवेन्यू) माफी भई वा व्यक्ति विशेषले कुनै तवरबाट आफ्नु हक गराई भोग गरी आएको सबै प्रकारको जग्गा जमीनमा भएका वन जङ्गल र सो वन जङ्गल सीमाना भित्रको पर्ति जमीनलाई समेत सम्झनुपर्छ ।

तर-

(क) आवादी जग्गा जमीनमा बीच बीचको फाटफुट रुखहरु वा घर कम्पाउण्ड भित्र वा फरक रहेका फलफूलका बगैंचा र सो भित्रका अरुरुख वन जङ्गल मानिनेछैन ।

(ख) उपत्यका र पहाडमा २५ रोपनीसम्म र तराईमा ५ बिगाहासम्म जग्गा जमीनमा कसैले आफ्नै मेहनतबाट रुख लगाई पालेको भए त्यस्ता रुखहरु वन जङ्गल मानिनेछैन ।

(२) निजी वन जङ्गलमा कुनै जग्गा जमीन पर्छ वा कुनै जग्गा जमीनमा निजी वन जङ्गल पर्छ भन्ने वा सो वन जङ्गलको सीमाना वा क्षेत्रफल यो हो भन्ने वा निजी वन जङ्गल हो वा होइन भन्ने कुरामा कुनै प्रश्न उठेमा सो कुरा नेपाल सरकारले त्यस कामका निमित्त मुकरर गरेका अधिकृतद्वारा निर्णय हुनेछ ।

(३) उपदफा (२) अन्तर्गत मुकरर भएका अधिकृतको निर्णयमा चित्त नबुझेका व्यक्तिले ३५ दिन भित्रै नेपाल सरकारमा पुनरावेदन गर्न सक्नेछ, त्यस्तो पुनरावेदन दिने अधिकार फरेष्ट अधिकृतको पनि सुरक्षित रहनेछ ।

(४) त्यस्तो पुनरावेदन परेपछि निर्णय गर्नको निमित्त नेपाल सरकारले सर्वोच्च अदालतका न्यायाधीश वा न्यायाधीश हुन लायकको व्यक्तिको अध्यक्षतामा २ अरु सदस्य मनोनित गरी १ ट्राइबुनल गठन गर्नेछ र सो ट्राइबुनलको निर्णय अन्तिम हुनेछ ।

(५) उपदफा (२) वा (४) बमोजिम गरिएका निर्णय उपर नालिश उजूर सुन्ने कुनै अदालतको पनि अधिकार हुनेछैन ।

३. **निजी वन जङ्गललाई राष्ट्रियकरण गर्ने** : (१) यो ऐन प्रारम्भ भएका मितिदेखि नेपाल राज्यमा भएको सबै निजी वन जङ्गलको स्वामित्व नेपाल सरकारमा सर्नेछ ।

(२) सो वन जङ्गलमा कुनै व्यक्तिको एकाधिकार हुने गरी भएको ऐन, सवाल, सनद वा अरु कुनै लिखत यो ऐन प्रारम्भ भएको मितिदेखि खारेज हुनेछ ।

(३) सरकारीया वन जङ्गलका सम्बन्धमा लागू रहेका कानून यो ऐन प्रारम्भ भएका मितिदेखि उपदफा (१) बमोजिम नेपाल सरकारमा सर्न आएको वन जङ्गलमा समेत लागू हुनेछ ।

४. **राष्ट्रियकरण भएका वन जङ्गलको पुराना मालिकसंग भएका ठेक्काको असर** : राष्ट्रियकरण भएका वन जङ्गलको पुराना मालिकसंग नेपाल सरकार मार्फत भएका रितपूर्वकको ठेक्काहरु यो ऐन प्रारम्भ भएपछि नेपाल सरकारसंग भए सरह नै मानिनेछ ।

५. **क्षतिपूर्तिको दावी गर्न नपाइने** : निजी वन जङ्गलमा भएको हक यो ऐन बमोजिम हरिएकोमा कुनै क्षतिपूर्तिको दावी गर्न पाइने छैन ।

६. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वित गर्नको निमित्त नेपाल सरकारले नियमहरु बनाउन सक्छ ।

७. **नेपाल सरकारको बाधा अडकाउ हटाउने अधिकार** : यो ऐनको दफाहरु कार्यान्वित गर्न कुनै बाधा अडकाउ परेमा नेपाल सरकारले ती बाधा फुकाउनको लागि राजपत्रमा प्रकाश गरी चाहिंदो आदेश निकाल्न सक्नेछ र त्यस्तो हरएक आदेश यस ऐनमा परे सरह मानिनेछ ।

---

**रुपान्तर** :

(१) नेपाल अन्तरिम शासन विधान (चौथो संशोधन) ऐन, २०२५ द्वारा "सरकार" शब्दको सट्टा "नेपाल सरकार" भन्ने शब्द राखी रुपान्तर गरिएको छ ।

(२) नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रुपान्तर भएका शब्दहरुः-
"अफिसर" को सट्टा "अधिकृत"
"अपिल" को सट्टा "पुनरावेदन ।

(३) केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रुपान्तरण गरेको छ :
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।